| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | ब्रह्माऽनुभूति (अपरोक्षाऽनुभूति) |
| अनुवादक | : | श्रीशरत्कुमार भट्टराई |
| सर्वाधिकार | : | @ अनुवादकमा सुरक्षित |
| प्रकाशक | : | श्रीराजर्षिजनकस्मृतिकोष<br>विजयचोक, प्रयागमार्ग,<br>बत्तीसपुतली–९, काठमाडौं।<br>फोन : ४११००५८ |
| प्रकाशन मिति | : | वि.सं. २०७२ पुत्रदा एकादशी |
| प्रकाशित सङ्ख्या | : | ३०० प्रति |
| मूल्य | : | रू. २५०।– |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : | एलायन्स प्रिन्टर्स एण्ड<br>मिडिया हाउस प्रा.लि.<br>सरस्वतीनगर, काठमाडौं। |
| ISBN | : | 9789937-2-9956-5 |

# प्रकाशकको भनाइ

यस कोषले आफ्नो स्रोत र साधनले भ्याएसम्म आध्यात्मिक विषयका अझ त्यसमा पनि विशेषरूपमा भक्ति र ज्ञानका विषयमा लेखिएका ग्रन्थहरू प्रकाशन गर्दै आएको छ। यस २०७२ सालमा पनि श्रीशरत्कुमार भट्टराईज्यूले लेख्नुभएका ग्रन्थहरूमध्ये आद्यगुरु श्रीशङ्कराचार्यद्वारा प्रणीत समछन्दमा नेपाली भाषामा अनुवाद गर्नुभएको ब्रह्माऽनुभूति (अपरोक्षाऽनुभूति) ग्रन्थ प्रकाशन गर्न पाएकोमा यस कोषलाई अपार खुशी लागेको छ।

यो ग्रन्थमा अद्वैत वेदान्तका परमसिद्धान्तहरू सङ्क्षिप्तरूपमा उल्लेख गरिएका छन्। यसबाट जिज्ञासु मुमुक्षुहरूले सहजैसँग ज्ञान प्राप्त गर्न सक्नुहुनेछ भन्ने विश्वास गर्न सकिन्छ। अतः यो ग्रन्थ सबै जिज्ञासु मुमुक्षुहरूका लागि अत्यन्त सङ्ग्रहणीय र पठनीयसमेत हुनेछ भन्ने यस कोषले ठानेको छ। यस्तो महत्त्वपूर्ण ग्रन्थको प्रकाशन गर्ने अभिभारा यस कोषले लेखकबाट पाएकोमा यो कोष लेखकप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछ। धन्यवाद। ॐ ब्रह्मार्पणमस्तु।

२०७२ पुत्रदा एकादशी श्रीराजर्षिजनकस्मृतिकोष

# ब्रह्मज्ञान र प्रारब्ध

पाँच दशकभन्दा लामो समयदेखि अहिलेसम्म यस अनुवादकले आचार्य शङ्करका ग्रन्थहरू र केही भाष्यहरूसमेत अध्ययन गर्ने र अनुवादसमेत गर्ने सौभाग्य पाएको हो। किन्तु उहाँका भाष्यबाहेकका अरू ग्रन्थहरूमा भने अनुवादकले कलम चलाएको थिएन। यस पटक भने अरू ग्रन्थहरूलाई छोडेर आचार्यको ग्रन्थ अपरोक्षानुभूतिको समछन्दमा नेपालीमा अनुवाद गर्ने यस अनुवादकले विचार गऱ्यो र सो अनुवाद चाँडै पूरा पनि भयो। अनुवाद पछि यसको नाम 'ब्रह्माऽनुभूति' हुन गयो।

यस ग्रन्थमा उहाँका तत्त्वबोध, आत्मबोध, विभिन्न भाष्यहरू र ग्रन्थहरूमा समेत उल्लेख भएका महत्त्वपूर्ण कुराहरू आचार्यले एकै ठाउँमा सङ्ग्रह गरेर सङ्क्षिप्त, सरल, सुस्पष्ट भाषा र शैलीमा दिनुभएको छ। जसमा मुख्यरूपमा अनुबन्धचतुष्टय, साधनचतुष्टय, अज्ञानको स्वरूप, ज्ञानको स्वरूप, शून्यवादको निराकरण, ब्रह्म, जीवब्रह्मैक्य, प्रपञ्चको मिथ्यात्व, अवस्थात्रयको मिथ्यात्व, प्राब्धकर्म, यमनियमादि अष्टाङ्गयोग, श्रवण, मनन, निदिध्यासन, वेदान्तसिद्धान्त, ब्रह्म, राजयोग आदि महत्त्वपूर्ण विषयहरू पर्दछन्।

यस ग्रन्थमा अनुष्टुप् छन्दमा लेखिएका १४४ श्लोकहरू छन्। यसमा प्रायः सबैजसो वेदान्तका मुख्यमुख्य विषयहरू समावेश गरेको पाइन्छ। यसमा आचार्य विद्यारण्य स्वामीको अत्यन्त विद्वत्तापूर्ण तर सरल संस्कृतमा लेखिएको दीपिका टीका समेत छ।

अज्ञानीहरू यस अखिल विश्वब्रह्माण्डको सर्जक परमात्मा परब्रह्मको बारेमा कहिल्यै पनि सोच्ने प्रयास गर्दैनन् र नगरीकन नै कालको मुखमा कवलित हुन पुग्दछन् । त्यतिमात्रै होइन अज्ञानीहरू सर्जक परमात्माका बारेमा थाहा नपाईकन उनको विचित्रको सिर्जनामा डुबुल्की मारेर हराइरहेका हुन्छन् । यस मिथ्या संसारलाई नै सत्य मानेर रमाइरहेका हुन्छन् । किन्तु यस विचित्रको मिथ्या संसारको स्रष्टा, पालक र संहारक सर्वव्यापक ब्रह्मको भने अज्ञानीले झल्को नै पाउन सकेको हुँदैन । निष्पट्ट अन्धकारमा बसेर अमूल्य नरजीवन अज्ञानीले बिताउँछ र अन्धकारबाट फेरि अन्धकारतर्फ जान्छ । मनुष्यको जस्तो दुर्लभ योनि पाएर पनि ब्रह्मज्ञान नै नगरीकन यस लोकबाट बिदा भएर जाने मान्छेलाई श्रुतिले आत्मघाती भनेको छ । मृत्युपश्चात् अन्धकारपूर्ण असुर्या नाम गरेको लोकमा त्यस्ता आत्मघातीहरू जान्छन् । त्यस्ताको कहिल्यै मुक्ति हुँदैन ।

अज्ञानी मनुष्यले आफ्नू अमूल्य जीवन विधि र निषेधपरक कर्महरू गरेर बिताइरहेको हुन्छ । [१]घाम उदाउने र अस्ताउने क्रममा उसको आयु समाप्त भइरहेको हुन्छ। अत्यन्त अन्धो मान्छेले सांसारिक नाफा र नोक्सानको हिसाब गर्दागर्दै आफू बूढो भएकोसम्म पनि उसले थाहा पाउने कोशिश गर्दैन । अज्ञानी मनुष्य यतिसम्म अन्धो हुन्छ कि आफ्नै आँखा अगाडि मान्छे जन्मेको, बूढो भएको, विपत्तिमा परेको र मृत्युमा प्राप्त भएको प्रत्यक्षरूपमा झलझली देखेर पनि ऊ पटक्कै डराउँदैन, मेरो पनि गति यही हो भन्ने सम्झँदैन । किनभने उसको त्यसो हुनु संसारप्रतिको अत्यन्त

---

१. आदित्यस्य गतागतैरहरहः सङ्क्षीयते जीवितम्,
व्यापारैर्बहुकार्यभारगुरुभिः कालोऽपि न ज्ञायते ।
दृष्ट्वा जन्मजराविपत्तिमरणं त्रासश्च नोत्पाद्यते,
पीत्वा मोहमयीं प्रमादमदिरामुन्मत्तभूतं जगत् ॥
– वैराग्यशतक ४३

आसक्तिको कारणले नै हो। वस्तुतः अज्ञानी मनुष्य प्रमादरूपी मदिरा पिएर उन्मत्त भएको हुन्छ, बेहोस भएको हुन्छ र बेसुद्धि हुन्छ, जसरी टन्न रक्सी पिएको मान्छेले आफू नाङ्गो भएको पनि थाहासम्म पाउँदैन र सबै एकछत्त देख्तछ। संसारप्रति हिरिक्क हुने अज्ञानी मान्छे पनि त्यस्तै मदमत्त अन्धो नै हो।

मिथ्या प्रपञ्चलाई नै सत्य मानेर रमाउँदा रमाउँदै अज्ञानी मनुष्यका[२] दिन, रात, बिहान, बेलुका, शिशिर, वसन्तादि ऋतुहरू आउने जाने गरिरहन्छन्। कालचक्र उसको आयु काटेर घुमिरहेको हुन्छ, तर संसाररूपी आसक्ति भने झन् बढ्दछ तर घट्तैन र अज्ञानीलाई त्यसै आशक्तिजन्य वासनाले अन्धो बनाएको हुन्छ। त्यो कहिल्यै पारै नपाउने संसृतिको चक्रवालमा परेर जन्मने र मर्ने गरिरहन्छ।

यदि मानिसले अत्यन्त घोरिएर यस सपनाजस्तो मिथ्या संसारको आसक्ति छोडेर[३] म को हुँ ? मभन्दा भिन्न ऊ को होला ? म कहाँबाट आएको हुँ ? मेरी आमा को हुन् ? मेरा बाबु को हुन् ? हाम्रो भेट यस सपनाजस्तो असार संसारमा कसरी र किन भएको होला ? भन्ने इत्यादि प्रश्नहरू आफैंले गर्ने गरे पनि अज्ञानीले ज्ञानको किरण आफूभित्र झुल्क्याउन सक्तछ। उसले सपनाजस्तो संसारलाई ठानेर बिस्तारै निष्काम कर्म, अहैतुकी भक्ति गर्दै अन्तःकरणमा रहेको मलदोष र विक्षेप दोष हटाएर आवरण दोष भङ्ग गर्न ब्रह्मज्ञानका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष ऊ पुग्न सक्तछ। किन्तु यसका

२. दिनमपि रजनी सायम्प्रातः शिशिरवसन्तौ पुनरायातः।
कालः क्रीडति गच्छत्यायुस्तदपि न मुञ्चत्याशावायुः॥
– चर्पटपञ्जरिकास्तोत्रम् २

३. कस्त्वं कोऽहं कुत अयातः का मे जननी को मे तातः।
इति परिभावय सर्वमसारं विश्वं त्यक्त्वा स्वप्नविचारम्॥
– चर्पटपञ्जरिकास्तोत्रम् १२

लागि आत्मकृपा, शास्त्रकृपा, गुरुकृपा र ईश्वरकृपा हुनु आवश्यक छ। यसका साथै प्रारब्ध कर्म पनि अनुकूल हुनै पर्दछ। अन्यथा अज्ञानीले निस्तार पाउन अत्यन्त मुस्किल पर्दछ।

मुमुक्षु जिज्ञासुले ब्रह्मज्ञानका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरु समक्ष गएर उपसत्तिपूर्वक ब्रह्मजिज्ञासा गर्नुपर्दछ। साधनचतुष्टययुक्त शिष्यले अनुशासित र समर्पित भएर गुरुको सेवा गरेर गुरुलाई खुशी पारेर गुरुमा भएको ब्रह्मविद्या जान्ने प्रयत्न गर्नुपर्दछ। गुरुमा भएको त्यो विद्या [४]भूमिको गर्भमा रहेको जल जस्तै अगम्य र अप्राप्य हो। अतः त्यसका लागि मुमुक्षु शिष्यले प्रयत्न गरेर पाउने प्रयास गर्नुपर्दछ, अन्यथा मुक्ति सम्भव छैन।

ब्रह्मज्ञानका लागि वा ब्रह्मसाक्षात्कार गर्न योग्य मुमुक्षु शिष्यले सर्वप्रथम [५]गुरुबाट वेदान्तवाक्यहरूको श्रवण गर्नुपर्दछ। त्यसपछि उपपत्तिपूर्वक मनन र दृढताका लागि निदिध्यास गर्नुपर्दछ। त्यसको लामु समयसम्म अभ्यास अर्थात् ब्रह्माभ्यास गर्नु पर्दछ। यिनीहरू नै ब्रह्मसाक्षात्कारका साक्षात् साधनहरू हुन्। निष्कामकर्म र उपासना आदि साक्षात् साधन नभएर ती बहिरङ्ग वा परम्परया साधनहरू हुन्। अपरोक्षानुभूतिमा यिनै कुराहरूलाई समेटेर राखिएको छ।

मुमुक्षुले दुरूह र दुर्लभ ब्रह्मज्ञान गर्नेपर्ने आत्यन्तिक मोक्षका लागि हो। क्षणिक मुक्तिले संसारको आवागमनलाई सधैँका लागि निमिट्यान्न पार्न सक्तैन। जबसम्म जन्मजन्मान्तर, युगयुगान्तर र कल्पकल्पान्तरदेखि अन्तःकरणमा जमेर बसेका वासनाहरूलाई

---

४. खनित्वा हि खनित्रेण भूतले वारि विन्दति।
तथा गुरुगतां विद्यां शुश्रूषुरधिगच्छति॥

– नीतिपञ्चशती ४३

५. श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः।
मत्त्वा च सततं ध्येयं ये ते दर्शनहेतवः॥

– वेदान्तसन्दर्भः

मुमुक्षुले भुसुक्क पारेर डढाउन सक्तैन तबसम्म उसले आत्यन्तिक मोक्ष प्राप्त गर्न सक्तैन। [६]जसरी दनदन बलेको आगोले सारा दाउराको थुप्रोलाई खरानी पारेर डढाइदिन्छ त्यसै गरेर ब्रह्मज्ञानरूपी जाज्वल्यमान आगोले अन्तःकरणमा थुप्रिएर रहेका सञ्चित, क्रियमाण र आगामी सबै कर्मलाई डढाइदिन्छ, कर्मको फल भोगाउन वर्तमान शरीरको प्रारम्भक प्रारब्धकर्मलाई भने ब्रह्मज्ञानले नाश गर्न सक्तैन। किनभने यो शरीरलाई सृजना गर्ने प्रारब्धकर्म शरीरपातसँगै नाश हुन्छ, बीचमा नाश हुँदैन।

भोग्न शुरु भएको प्रारब्धकर्म भोग गरेर नै समाप्त हुन्छ र सञ्चितकर्म ब्रह्मज्ञानद्वारा समाप्त हुन्छन्। त्यसपछि जीवको आत्यन्तिक मोक्ष हुन्छ भन्ने कुरा आद्य जगद्गुरु श्रीशङ्कराचार्यले आफ्ना तत्त्वबोध लगायतका ग्रन्थहरूमा लेख्नुभएको छ। यसका साथै गीता ४।३७ को भाष्य, छान्दोग्योपनिषद् ६।१४।२, ५।१४।३, बृहदारण्यकोपनिषद् ४।४।२२, मुण्डकोपनिषद् २।२।८, ब्रह्मसूत्र ४।१।९।१३, ४।१।११।१५, ४।१।१४।१९ का भाष्यहरूमा समेत सञ्चित कर्म ब्रह्मज्ञानबाट नाश हुने र प्रारब्धकर्म भने भोग गरेर मात्र नाश हुने भनेर उहाँले स्पष्ट नै लेख्नुभएको छ। किन्तु यस अपरोक्षाऽनुभूतिग्रन्थको ८९ औँ श्लोकदेखि ९९ औँ श्लोकसम्म प्रारब्धकर्मको चर्चा गरिएको छ र ब्रह्मज्ञान भएपछि सञ्चित कर्मको साथसाथै प्रारब्धकर्मको पनि नाश हुन्छ भनिएको छ।

---

६. यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा॥

– गीता ४।३७

३. कस्त्वं कोऽहं कुत अथातः का मे जननी को मे तातः।
इति परिभावय सर्वमसारं विश्व त्यक्त्वा स्वप्नविचारम्॥

– चर्पटपञ्जरिकास्तोत्रम् १२

यसको पुष्टि गर्न ९८ औँ श्लोकमा मुण्डकोपनिषद् (२।२।८) मन्त्रको पनि उद्धरण गरेर त्यस मन्त्रमा कर्माणि भन्ने बहुवचन आएको हुँदा प्रारब्ध कर्मको समेत नाश हुन्छ भनिएको छ। किन्तु उपनिषद्मा आएको उक्त मन्त्रको भाष्यमा भने उहाँले देहारम्भक प्रारब्ध कर्मबाहेक अरू कर्मको नाश हुन्छ भनेर लेख्नुभएको छ। आफैँले लेखेको भाष्य र यस ग्रन्थका बीचमा यस्तो अमिल्दो कुरा कसरी लेखिन गयो ? विचारणीय छ।

अन्त्यमा यसको प्रकाशक श्रीराजर्षिजनकस्मृतिकोष, सम्पादन गर्नुहुने सहप्राध्यापक ध्रुवप्रसाद भट्टराई र कम्प्यूटरसञ्चालक श्रीखड्गप्रसाद खनाललाई पनि म हार्दिक धन्यवाद ज्ञापन गर्दछु। ॐ ब्रह्मार्पणमस्तु।

२०७२ पुत्रदा एकादशी

विनीत
शरत्कुमार भट्टराई

# ब्रह्माऽनुभूतिः

श्रीहरिं परमानन्दमुपदेष्टारमीश्वरम् ।
व्यापकं सर्वलोकानां कारणं तं नमाम्यहम् ॥
उपदेशकमा श्रेष्ठ परमानन्द चिद्घन ।
भगवान् विष्णुमा मेरो सधैँ छ अभिवादन ॥
(१)

अनुबन्धचतुष्टय –
अपरोक्षानुभूतिर्वै प्रोच्यते मोक्षसिद्धये ।
सद्भिरेव प्रयत्नेन वीक्षणीया मुहुर्मुहुः ॥
अपरोक्षानुभूति ग्रन्थ हुन्छ यो मोक्षकारण ।
म ठान्दछु सधैँ पढ्लान् श्रद्धाका साथ सज्जन ॥
(२)

साधनचतुष्टय –
स्ववर्णाश्रमधर्मेण तपसा हरितोषणात् ।
साधनञ्च भवेत्पुंसां वैराग्यादिचतुष्टयम् ॥
स्ववर्णाश्रमसद्धर्मद्वारा ईश्वर पूजन ।
गरेमा बन्दछन् प्राप्त चारोटै मोक्षसाधन ॥
(३)

वैराग्यको स्वरूप –

ब्रह्मादिस्थावरान्तेषु वैराग्यं विषयेष्वनु।
यथैव काकविष्ठायां वैराग्यं तद्धि निर्मलम्॥
जसरी काकविष्ठामा घृणा हुन्छ सधैँभर।
त्यस्तै विषयमा राख्नू विरक्तिपन सुस्थिर॥

(४)

नित्यानित्य वस्तुविवेक –

नित्यमात्मस्वरूपं हि दृश्यं तद्विपरीतगम्।
एवं यो निश्चयः सम्यग्विवेको वस्तुनः स वै।
आत्मा हो नित्य देखिन्न अनित्य वस्तु देखिने।
जसले सब यो बुझ्छ विवेक सहजै हुने॥

(५)

शमदम –

सदैव वासनात्यागः शमोऽयमिति शब्दितः
निग्रहो बाह्यवृत्तीनां दम इत्यभिधीयते॥
संसारी वासना त्याग्नू शमसम्पत्ति मानिने।
बाहिरी वृत्ति रोक्नू हो दम सम्पत्ति ठानिने॥

(६)

उपरति र तितिक्षा –

विषयेभ्यः परावृत्तिः परमोपरतिर्हि सा।
सहनं सर्वदुःखानां तितिक्षा सा शुभा मता॥
विषयी नहुनू चित्त परमोपरति सदा।
दुःखादिसहने शक्ति तितिक्षा धन सर्वदा॥

(७)

श्रद्धा र समाधान –
निगमाचार्यवाक्येषु भक्तिः श्रद्धेति विश्रुता।
चित्तैकाग्र्यं तु सल्लक्ष्ये समाधानमिति स्मृतम्॥
शास्त्रआचार्यमा भक्ति श्रद्धा हो बुझ्नु निश्चित।
चित्त एकाग्रता राख्नु हो समाधान विश्रुत॥
(८)

मुमुक्षुता –
संसारबन्धनिर्मुक्तिः कथं मे स्यात्कदा विधे।
इति या सुदृढा बुद्धिर्वक्तव्या सा मुमुक्षुता॥
संसारबन्धनिर्मुक्ति होला लौ कसरी भनी।
मन गर्नु मुमुक्षा हो विरक्ति अति नै बनी॥
(९)

उक्तसाधनयुक्तेन विचारः पुरुषेण हि।
कर्त्तव्यो ज्ञानसिद्ध्यर्थमात्मनः शुभमिच्छता॥
उक्त साधनले युक्त मुमुक्षुजनले सदा।
प्रयत्न ज्ञानको गर्नु बनी विरक्त सर्वदा॥
(१०)

ज्ञानको आवश्यकता –
नोत्पद्यते विना ज्ञानं विचारेणान्यसाधनैः।
यथा पदार्थभानं हि प्रकाशेन विना क्वचित्॥
विचार ज्ञानको हेतु नित्यानित्य बुझाउन।
जसरी सूर्यको ज्योति वस्तु ज्ञान गराउन॥
(११)

विचारको स्वरूप –

कोऽहं कथमिदं जातं को वै कर्ताऽस्य विद्यते।
उपादानं किमस्तीह विचारः सोऽयमीदृशः ॥
म को हुँ ? अनि संसार के हो ? कर्ता र कारण ?
भन्ने विचार गर्नू नै भनिन्छ सुविचारण ॥
(१२)
नाहं भूतगणो देहो नाहं चाक्षगणस्तथा।
एतद्विलक्षणः कश्चिद् विचारः सोऽयमीदृशः ॥
म स्थूल अथवा सूक्ष्म देहभन्दा विलक्षण।
म ब्रह्म हुँ भनी गर्नू विचार जो प्रतिक्षण ॥
(१३)
अज्ञानात्प्रभवं सर्वं ज्ञानेन प्रविलीयते।
सङ्कल्पो विविधः कर्ता विचार सोऽयमीदृशः ॥
सृष्टि हुन्छ अविद्याले विद्याले सृष्टि नास्तछ।
सङ्कल्प सृष्टिको मूल भनी विचार्नु पर्दछ ॥
(१४)
एतयोर्यदुपादानमेकं सूक्ष्मं सदव्ययम्।
यथैव मृद्घटादीनां विचारः सोऽयमीदृशः ॥
सङ्कल्प र अविद्याको सत् नै हो मुख्य कारण।
जसरी मृत्तिका हुन्छ घटको मुख्य कारण ॥
(१५)

अहमेकोऽपि सूक्ष्मश्च ज्ञाता साक्षी सदव्ययः।
तदहं नात्र सन्देहो विचारः सोऽयमीदृशः॥
आत्मा अद्वैत हो सूक्ष्म ज्ञाता साक्षी सदव्यय।
म त्यही आत्मा हूँ भन्ने बिचारी गर्नु निश्चय॥
(१६)

अज्ञानको स्वरूप –
आत्मा विनिष्कलो ह्येको देहो बहुभिरावृतः।
तयोरैक्यं प्रपश्यन्ति किमज्ञानमतः परम्।
विनिष्कल छ यो आत्मा देह अज्ञाननिर्मित।
यिनको एकता ठान्नु अज्ञान हो सुनिश्चित॥
(१७)

आत्मा नियामकश्चान्तर्देहो बाह्यो नियम्यकः।
तयोरैक्यं प्रपश्यन्ति किमज्ञानमतः परम्॥
नियामक हो जो द्रष्टा नियम्य बाह्य वस्तुतः।
दुवैको एकता गर्छ अज्ञानी जनले स्वतः॥
(१८)

आत्मा ज्ञानमयः पुण्यो देहो मांसमयोऽशुचिः।
तयोरैक्यं प्रपश्यन्ति किमज्ञानमतः परम्॥
आत्मा हो ज्ञानको पुञ्ज अशुद्ध देह मांसल।
दुवैको एकता ठान्नु अज्ञान हो सुनिश्चल॥
(१९)

आत्मा प्रकाशकः स्वच्छो देहस्तामस उच्यते।
तयोरैक्यं प्रपश्यन्ति किमज्ञानमतः परम् ॥
आत्मा प्रकाशक स्वच्छ देह तामसले भरी।
दुवैको एकता ठान्छ मूढ अज्ञानले गरी ॥
(२०)

आत्मा नित्यो हि सद्रूपो देहोऽनित्यो ह्यसन्मयः।
तयोरैक्यं प्रपश्यन्ति किमज्ञानमतः परम् ॥
आत्मा नित्य र सद्रूप अनित्य देह हो असत्।
तिनैको एकता देख्नु त्यो हो अत्यन्त नै असत् ॥
(२१)

आत्माको प्रकाशकत्व –

आत्मनस्तत्प्रकाशत्वं यत्पदार्थावभासनम्।
नाग्न्यादिदीप्तिवद्दीप्तिर्भवत्यान्ध्यं यतो निशि ॥
सूर्य अग्नि सरी हुन्छ आत्मज्योति प्रकाशित।
विकार दृश्य हो द्रष्टा अविकारी छ वस्तुतः ॥
(२२)

मूढको लक्षण –

देहोऽहमित्ययं मूढो धृत्वा तिष्ठत्यहो जनः।
ममायमित्यपि ज्ञात्वा घटद्रष्टेव सर्वदा ॥
म देह हुँ भनी मूढ देहात्मबुद्धि गर्दछ।
आत्मा दृश्य हुँदै हैन द्रष्टा हो विज्ञ मान्दछ ॥
(२३)

ज्ञानको स्वरूप –

ब्रह्मैवाहं समः शान्तः सच्चिदानन्दलक्षणः ।
नाहं देहो ह्यसद्रूपो ज्ञानमित्युच्यते बुधैः ॥
सम शान्त म हुँ ब्रह्म सत् चित् आनन्दले युत ।
असत् देह हुँदैहैन भन्ने हो ज्ञान वस्तुतः ॥
(२४)

निर्विकारो निराकारो निरवद्योऽहमव्ययः ।
नाहं देहो ह्यसद्रूपो ज्ञानमित्युच्यते बुधैः ॥
निर्विकार निराकार निरवद्य म अव्यय ।
मिथ्या शरीर के हुन्थेँ ? भन्ने हो ज्ञान निर्भय ॥
(२५)

निरामयो निराभासो निर्विकल्पोऽहमाततः ।
नाहं देहो ह्यसद्रूपो ज्ञानमित्युच्यते बुधैः ॥
निरामय निराभास निर्विकल्प विभु स्वतः ।
म देह हुँ असत् हैन भन्ने हो ज्ञान तत्त्वतः ॥
(२६)

निर्गुणो निष्क्रियो नित्यो नित्यमुक्तोऽहमच्युतः ।
नाहं देहो ह्यसद्रूपो ज्ञानमित्युच्यते बुधैः ॥
म हुँ निष्क्रिय नैर्गुण्य नित्य मुक्त र अच्युत ।
म हैन नाशवान् देह यही हो ज्ञान तत्त्वतः ॥
(२७)

निर्मलो निश्चलोऽनन्तः शुद्धोऽहमजरोऽमरः ।
नाहं देहो ह्यसद्रूपो ज्ञानमित्युच्यते बुधैः ॥
म हुँ निर्मल निश्चेष्ट अनन्त अजरामर ।
असत् देह म ता हैन भन्ने हो ज्ञान सुन्दर ॥
(२८)

शून्यवादको निराकरण –

स्वदेहे शोभनं सन्तं पुरुषाख्यञ्च सम्मतम् ।
किं मूर्ख शून्यमात्मानं देहातीतं करोषि भोः ॥
तिमी भित्र छ जो आत्मा त्यो नै हो ब्रह्म वस्तुतः ।
म हुँ शून्य भनी हिँड्छौ तिमी हौ मूर्ख नै स्वतः ॥
(२९)
स्वात्मानं शृणु मूर्ख त्वं श्रुत्या युक्त्या च पूरुषम् ।
देहातीतं सदाकारं सुदुर्दर्शं भवादृशैः ॥
श्रुतियुक्ति दुवैबाट आत्मा हौ बुझ वस्तुतः ।
त्यस्को भान सधैँ गर्छौ देख्तैनौ मूर्ख हौ स्वतः ॥
(३०)
अहंशब्देन विख्यात एक एव स्थितः परः ।
स्थूलस्त्वनेकतां प्राप्तः कथं स्याद् देहकः पुमान् ॥
जानिन्छ जो अहंबाट एकमात्र परात्पर ।
अनेक, स्थूल सोही नै कसरी हुनसक्छ र ?
(३१)

अहं द्रष्टृतया सिद्धो देहो दृश्यतया स्थितः।
ममायमिति निर्देशात्कथं स्याद् देहकः पुमान्॥
आत्मा द्रष्टा सदा सिद्ध देह ता दृश्य हो तर।
द्रष्टा नै दृश्य यो फेरि कसरी हुन सक्छ र ?

(३२)

अहं विकारहीनस्तु देहो नित्यं विकारवान्।
इति प्रतीयते साक्षात्कथं स्याद् देहकः पुमान्॥
अविकारी स्वयं आत्मा विकारी देह हो सदा।
आत्मा शरीर के हुन्थ्यो ? प्रतीति हुन्छ सर्वदा॥

(३३)

यस्मात्परमिति श्रुत्या तथा पुरुषलक्षणम्।
विनिर्णीतं विमूढेन कथं स्याद् देहकः पुमान्॥
परात्पर सबै ब्रह्म भनेर श्रुति भन्दछ।
विभु सूक्ष्म उही ब्रह्म कसरी देह बन्दछ ?

(३४)

सर्वं पुरुष एवेति सूक्ते पुरुषसंज्ञिते।
अप्युच्यते यतः श्रुत्या कथं स्याद् देहकः पुमान्॥
'सर्वं पुरुष एवेदम्' श्रुतिले स्पष्ट भन्दछ।
आत्मा अच्युत हो फेरि कसरी देह बन्दछ ?

(३५)

असङ्ग पुरुषः प्रोक्तो बृहदारण्यके ऽपि च ।
अनन्तमलसंश्लिष्टः कथं स्याद् देहकः पुमान् ॥
बृ.उ.ले ब्रह्म हो शुद्ध असङ्ग नित्य भन्दछ ।
त्यै आत्मा कसरी मिथ्या अशुद्ध देह बन्दछ ?
(३६)

तत्रैव च समाख्यातः स्वयंज्योतिर्हि पूरुषः ।
जडः परप्रकाश्योऽसौ कथं स्याद् देहकः पुमान् ॥
स्वयंज्योतिरयं आत्मा श्रुतिले नित्य जब भन्दछ ।
परप्रकाश्य सो देह आत्मा कसरी बन्दछ ?
(३७)

कर्मकाण्डीको विचार –

प्रोक्तोऽपि कर्मकाण्डेन ह्यात्मा देहाद्विलक्षणः ।
नित्यश्च तत्फलं भुङ्क्ते देहपातादनन्तरम् ॥
कर्मी भन्दछ आत्मा हो देहभन्दा विलक्षण ।
मृत्यु पश्चात् उही भोग्छ कर्मको फल तत्क्षण ॥
(३८)

लिङ्गदेहको अनात्मता –

लिङ्गञ्चानेकसंयुक्तं चलं दृश्यं विकारि च ।
अव्यापकमसद्रूपं तत्कथं स्यात्पुमानयम् ॥
लिङ्गदेह विकारी हो असत्य दृश्य अस्थिर ।
अव्यापक, उही देह आत्मा के हुनसक्छ र ?
(३९)

एवं देहद्वयादन्य आत्मा पुरुष ईश्वरः ।
सर्वात्मा सर्वरूपश्च सर्वातीतोऽहमव्ययः ॥
स्थूलसूक्ष्म दुवै देह भन्दा पर छ ईश्वर ।
सर्वात्मा सर्वरूपादि सर्वातीत म अक्षर ॥
(४०)

इत्यात्मदेहभागेन प्रपञ्चस्यैव सत्यता ।
यथोक्ता तर्कशास्त्रेण ततः किंपुरुषार्थता ॥
तर्कशास्त्रीहरू देह आत्मा भेद गरीकन ।
प्रपञ्च सत्य हो भन्छौ, पुरुषार्थ भयो भन ?
(४१)

इत्यात्मदेहभेदेन देहात्मत्वं निवारितम् ।
इदानीं देहभेदस्य ह्यसत्वं स्फुटमुच्यते ॥
यसरी देह हो आत्मा भन्ने भयो निवारण ।
अब यो भेद हो भूटो भन्ने गरिन्छ वर्णन ॥
(४२)

देहभेद असत्य हो –
चैतन्यस्यैकरूपत्वाद् भेदो युक्तो न कर्हिचित् ।
जीवत्वञ्च मृषा ज्ञेयं रज्जौ सर्पग्रहो यथा ॥
चैतन्य एउटै नै हो त्यस्मा भेद कहाँ हुने ।
भूटो जीवत्व हो जस्तै डोरीमा सर्प देखिने ॥
(४३)

चित्तत्त्व –

रज्ज्वज्ञानात् क्षणेनैव यद्वद्रज्जुर्हि सर्पिणी।
भाति तद्वच्चितिः साक्षाद् विश्वाकारेण केवला॥
नहुँदा रज्जुको ज्ञान रज्जुमा सर्प देखिने।
चित्को अज्ञानले गर्दा चित्मा संसार देखिने॥
(४४)

ब्रह्म नै उपादानकारण –

उपादानं प्रपञ्चस्य ब्रह्मणोऽन्यन्न विद्यते।
तस्मात्सर्वंप्रपञ्चोऽयं ब्रह्मैवास्ति न चेतरत्॥
प्रपञ्चको उपादान अद्वैत ब्रह्ममात्र हो।
त्यसै कारणले गर्दा प्रपञ्च पनि ब्रह्म हो॥
(४५)

व्याप्यव्यापकता मिथ्या सर्वमात्मेति शासनात्।
इति ज्ञाते परे तत्त्वे भेदस्यावसरः कुतः॥
व्याप्यव्यापक हो मिथ्या छ आत्मामात्र वस्तुतः।
यस्तो ज्ञान भए भाग्छ द्वैतको भान नै स्वतः॥
(४६)

श्रुत्या निवारितं नूनं नानात्वं स्वमुखेन हि।
कथं भासो भवेदन्यः स्थिते चाद्वयकारणे॥
स्वयं नै श्रुतिले गर्छ नानात्वको निवारण।
कसरी द्वैत देखिन्छ जस्को ब्रह्म छ कारण॥
(४७)

भेदभावमा दोष –

दोषोऽपि विहितः श्रुत्या मृत्योर्मृत्युं स गच्छति।
इह पश्यति नानात्वं मायया वञ्चितो नरः॥
नानात्व जसले देख्छ जन्मन्छ अनि मर्दछ।
मायाको पुतली हो त्यो श्रुतिले पनि भन्दछ॥
(४८)

ब्रह्मबाट जीवको उत्पत्ति –

ब्रह्मणः सर्वभूतानि जायन्ते परमात्मनः।
तस्मादेतानि ब्रह्मैव भवन्तीत्यवधारयेत्॥
ब्रह्मबाटै सबै प्राणी निस्कन्छन् ब्रह्म हो सब।
यस्तो निश्चय गर्नाले जिन्दगी बन्छ उत्सव॥
(४९)

ब्रह्मको सर्वव्यापकता –

ब्रह्मैव सर्वनामानि रूपाणि विविधानि च।
कर्माण्यपि समग्राणि बिभर्तीति श्रुतिर्जगौ॥
ब्रह्मले नै सबै नाम रूप धारण गर्दछ।
सबै कर्महरू धर्छ भनेर श्रुति भन्दछ॥
(५०)

जीव र ब्रह्ममा एकत्व –

सुवर्णाज्जायमानस्य सुवर्णत्वञ्च शाश्वतम्।
ब्रह्मणो जायमानस्य ब्रह्मत्वञ्च तथा भवेत्॥
सुनको गहना जस्तै आखिरी सुन मात्र हो।
विवर्त ब्रह्मको विश्व त्यसैले ब्रह्ममात्र हो॥
(५१)

भेदभावमा भय –

स्वल्पमप्यन्तरं कृत्वा जीवात्मपरमात्मनोः।
यः सन्तिष्ठति मूढात्मा भयं तस्याभिभाषितम्॥
आत्मा र परमात्मामा जसले भेद गर्दछ।
अज्ञानी मूढ मान्छे त्यो भय नै प्राप्त गर्दछ॥

(५२)

अज्ञानबाट नै द्वैतको प्रतीति हुन्छ –

यत्राज्ञानाद् भवेद् द्वैतमितरस्तत्र पश्यति।
आत्मत्वेन यदा सर्वं नेतरस्तत्र चाण्वपि॥
अज्ञानैबाट जन्मन्छ द्वैतभेद परस्पर।
ज्ञानले भेद नासिन्छ भास्छ यौटै परात्पर॥

(५३)

यस्मिन्सर्वाणि भूतानि ह्यात्मत्वेन विजानतः।
न वै तस्य भवेन्मोहो न च शोकोऽद्वितीयतः॥
मुमुक्षु जब आफैँमा सारा प्रपञ्च जान्दछ।
शोकमोहादि नासिन्छन् सर्वत्र ब्रह्म मान्दछ॥

(५४)

अद्वैतको समर्थनमा श्रुति –

अयमात्मा हि ब्रह्मैव सर्वात्मकतया स्थितः।
इति निर्धारितं श्रुत्या बृहदारण्यसंस्थया॥
यो आत्मा ब्रह्म हो भन्छ बृहदारण्यले जब।
अद्वैत ब्रह्म हो आत्मा हुन्छ निश्चय यो तब॥

(५५)

प्रपञ्चको मिथ्यात्वमा दृष्टान्त –
अनुभूतोऽप्ययं लोको व्यवहारक्षमोऽपि सन् ।
असद्रूपो यथा स्वप्न उत्तरक्षणबाधतः ॥
स्वप्नका वस्तु देखिन्छन् स्वप्नमा सत्यझैँ गरी ।
जागा हुँदा सबै भाग्छन् सर्वथा नभए सरी ॥
(५६)

स्वप्नो जागरणेऽलीकः स्वप्नेऽपि जागरो नहि
द्वयमेव लये नास्ति लयोऽपि ह्युभयोर्न च ॥
असत्य स्वप्न जाग्रत्मा जाग्रत् हो स्वप्नमा असत् ।
असत् हुन् लयमा दोटै दोटैमा लय हो असत् ॥
(५७)

त्रयमेव भवेन्मिथ्या गुणत्रयविनिर्मितम् ।
अस्य द्रष्टा गुणातीतो नित्यो ह्येकश्चिदात्मकः ॥
अवस्था तीन मिथ्या हुन् गुण तीन विनिर्मित ।
साक्षी हो यिनको द्रष्टा एक नित्य सुनिश्चित ॥
(५८)

जीव र ब्रह्मको एकत्व –
यद्वन्मृदि घटभ्रान्तिं शुक्तौ वा रजतस्थितिम् ।
तद्वद् ब्रह्मणि जीवत्वं वीक्ष्यमाणे न पश्यति ॥
माटामा घटको भ्रान्ति शुक्तिमा रजतस्थिति ।
साक्षात्कार हुँदासम्म ब्रह्ममा जीवको स्थिति ॥
(५९)

यदा मृदि घटो नाम कनके कुण्डलाभिधा।
शुक्तौ हि रजतख्यातिर्जीवशब्दस्तथा परे॥
घट हो मृत्तिका नाम गहना सुन हो अनि।
चाँदी नै शुक्तिको नाम ब्रह्म नै जीव हो पनि॥
(६०)

ब्रह्ममय संसार –

यथैव व्योम्नि नीलत्वं यथा नीरं मरुस्थले।
पुरुषत्वं यथा स्थाणौ तद्वद् विश्वं चिदात्मनि॥
जस्तै आकाशमा नीलो मरुमा जलको भ्रम।
ठुटामा नरको भान ब्रह्ममा विश्वको भ्रम॥
(६१)

यथैव शून्ये वैतालो गन्धर्वाणां पुरं यथा।
यथाकाशे द्विचन्द्रत्वं तद्वत्सत्ये जगत्स्थितिः॥
जस्तै निर्जनमा भूत गन्धर्वपुर मेघमा।
आकाशमा दुई चन्द्र त्यस्तै छ विश्व सत्यमा॥
(६२)

यथा तरङ्गकल्लोलैर्जलमेव स्फुरत्यलम्।
पात्ररूपेण ताम्रं हि ब्रह्माण्डौघस्तथात्मता॥
जस्तै समुद्रको छाल अन्त्यमा जलरूप हो।
त्यस्तै नै पात्र तामो हो आत्मा नै विश्वरूप हो॥
(६३)

घटनाम्ना यथा पृथ्वी पटनाम्ना हि तन्तवः ।
जगन्नाम्ना चिदाभाति ज्ञेयं तत्तदभावतः ॥
पृथ्वी नै घट हो खास धागै हो वस्त्र सुन्दर ।
आत्मा नै हो जगत् सारा आत्मा बाहेक के छ र ?

(६४)

ब्रह्ममय व्यवहार –

सर्वोऽपि व्यवहारस्तु ब्रह्मणा क्रियते जनैः ।
अज्ञानान्न विजानन्ति मृदेव हि घटादिकम् ॥
ब्रह्मबाटै चलेको छ व्यवहार खडा बनी ।
अज्ञानी तर जान्दैनन् माटो नै हो घडा भनी ॥

(६५)

विश्व र ब्रह्ममा कार्यकारणता –

कार्यकारणता नित्यमास्ते घटमृदोर्यथा ।
तथैव श्रुतियुक्तिभ्यां प्रपञ्चब्रह्मणोरिह ॥
घडा र मृत्तिका बीच देखिन्छ कार्यकारण ।
त्यस्तै प्रपञ्च हो कार्य ब्रह्म हो मुख्य कारण ॥

(६६)

गृह्यमाणे घटे यद्वन्मृत्तिकायाति वै बलात् ।
वीक्ष्यमाणे प्रपञ्चेऽपि ब्रह्मैवाभाति भासुरम् ॥
घडालाई लिँदाखेरि माटो नै आउने स्वतः ।
जगत्लाई लिँदाखेरि ब्रह्मै आउँछ वस्तुतः ॥

(६७)

आभासमा द्वैविध्य –

सदैवात्मा विशुद्धोऽस्ति ह्यशुद्धो भाति वै सदा।
यथैव द्विविधा रज्जुर्ज्ञानिनोऽज्ञानिनोऽनिशम् ॥
अज्ञले रज्जुमा सर्प ज्ञानीले देख्छ रज्जु नै।
अज्ञले देख्छ संसार ज्ञानीले देख्छ ब्रह्म नै ॥
(६८)

भेदबुद्धिमिथ्या –

यथैव मृन्मयः कुम्भस्तवद् देहोऽपि चिन्मयः।
आत्मानात्मविभागोऽयं मुधैव क्रियतेऽबुधैः ॥
घडा हो जसरी माटो त्यस्तै हो देह चिन्मय।
ज्ञानीका दृष्टिमा छैन भेदबुद्धि र संशय ॥
(६९)

देहतादात्म्यनिरूपण –

सर्पत्वेन यथा रज्जू रजतत्वेन शुक्तिका।
विनिर्णीता विमूढेन देहत्वेन तथात्मना ॥
अज्ञानी रज्जु हो सर्प सिपी रजत ठान्दछ।
त्यस्तै नै अज्ञले देहै आत्मा भनेर मान्दछ ॥
(७०)

घटत्वेन यथा पृथ्वी पटत्वेनैव तन्तवः।
विनिर्णीता विमूढेन देहत्वेन तथात्मता ॥
पृथ्वीलाई घटा मान्छ तन्तु नै वस्त्र ठान्दछ।
त्यस्तै नै उसले देहै आत्मा भनेर मान्दछ ॥
(७१)

कनकं कुण्डलत्वेन तरङ्गत्वेन वै जलम् ।
विनिर्णीता विमूढेन देहत्वेन तथात्मना ॥
गहना सुन हो ठान्छ तरङ्ग जल ठान्दछ ।
स्वैपरी अज्ञले देह आत्मा भनेर मान्दछ ॥
(७२)

पुरुषत्वे यथा स्थाणुर्जलत्वेन मरीचिका ।
विनिर्णीता विमूढेन देहत्वेन तथात्मना ॥
ठूटो मानिस हो भन्छ मरीचि जल ठान्दछ ।
त्यस्तै नै मूर्खले देह आत्मा भनेर मान्दछ ॥
(७३)

गृहत्वेनैव काष्ठानि खड्गत्वेनैव लोहता ।
विनिर्णीता विमूढेन देहत्वेन तथात्मता ॥
काठ नै घर हो भन्छ खड्गै फलाम ठान्दछ ।
अज्ञले स्वैपरी देह आत्मा भनेर मान्दछ ॥
(७४)

आत्मामा देहत्व –

यथा वृक्षविपर्यासो जलाद्भवति कस्यचित् ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
जलमा वृक्षको छाया जसरी वृक्ष ठान्दछ ।
त्यसै गरेर अज्ञानी आत्मामा देह मान्दछ ॥
(७५)

पोतेन गच्छतः पुंसः सर्वं भातीव चञ्चलम् ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
जसरी नाउमा तर्दा चलेको सब देखिने ।
त्यस्तै अज्ञानले गर्दा आत्मामा देह देखिने ॥
(७६)

पीतत्वं हि यथा शुभ्रे दोषाद् भवति कस्यचित् ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
पित्तका दोषले सेतो पँहेलो तुल्य देखिने ।
त्यस्तै अज्ञानले गर्दा आत्मामा देह देखिने ॥
(७७)

चक्षुर्भ्यां भ्रमशीलाभ्यां सर्वं भाति भ्रमात्मकम् ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
आँखाका भ्रमले सारा घुमेको तुल्य देखिने ।
त्यस्तै अज्ञानले गर्दा आत्मामा देह देखिने ॥
(७८)

अलातं भ्रमणेनैव वर्तुलं भाति सूर्यवत् ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
घुमाउँदा अगुल्टो नै सूर्यझैँ गोल देखिने ।
त्यस्तै अध्यासले गर्दा आत्मामा देह देखिने ॥
(७९)

महत्त्वे सर्ववस्तूनामणुत्वं ह्यतिदूरतः ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
टाढाबाट ठुलो वस्तु अत्यन्त स्वल्प देखिने ।
त्यस्तै अज्ञानले गर्दा आत्मामा देह देखिने ॥
(८०)

सूक्ष्मत्वे सर्वभावानां स्थूलत्वं चोपनेत्रतः ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
सानो वस्तु निकै ठूलो देखिन्छ उपनेत्रले ।
आत्मामा देहको भान देखिन्छ भ्रमज्ञानले ॥
(८१)

काचभूमौ जलत्वं वा जलभूमौ हि काचता ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
काँचका भूमिमा पानी पानीमा भूमि देखिने ।
त्यस्तै नै भ्रमले गर्दा आत्मामा देह देखिने ॥
(८२)

यद्वदग्नौ मणित्वं हि मणौ वा वह्निता पुमान् ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
मणिमा अग्निको बुद्धि अग्निमा मणिको भ्रम ।
त्यसै गरेर देखिन्छ आत्मामा देहको भ्रम ॥
(८३)

अभ्रेषु सत्सु धावत्सु सोमो धावति भाति वै ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
कुद्दा आकाशमा मेघ कुदेझैँ चन्द्रमा हुने ।
त्यसै गरेर आत्मामा देह अध्यास देखिने ॥
(८४)

यथैव दिग्विपर्यासो मोहाद्भवति कस्यचित् ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
दिशाको भ्रमले पान्थ उल्टो पथ समात्तछ ।
त्यस्तै नै भ्रमले गर्दा आत्मामा देह भास्तछ ॥
(८५)

यथा शशी जले भाति चञ्चलत्वेन कस्यचित् ।
तद्वदात्मनि देहत्वं पश्यत्यज्ञानयोगतः ॥
हल्लिँदा जलको चन्द्र चन्द्रमा हल्लिए सरी ।
देखिन्छ भ्रमले गर्दा आत्मै देह भए सरी ॥
(८६)

ज्ञानद्वारा देहाध्यासको निवृत्ति –

एवमात्मन्यविद्यातो देहाध्यासो हि जायते ।
सैवमात्मपरिज्ञानाल्लीयते च परात्मनि ॥
यसरी देह अध्यास आत्मामा जो उदाउँछ ।
आत्मज्ञान जसै हुन्छ सो अध्यास हराउँछ ॥
(८७)

सर्वमात्मतया ज्ञातं जगत्स्थावरजङ्गमम् ।
अभावात्सर्वभावानां देहस्य चात्मता कुतः ॥
आत्मज्ञान जसै हुन्छ सर्वत्र ब्रह्म देखिने ।
पदार्थ सब हुन् मिथ्या देहात्मा कसरी हुने ॥

(८८)

आत्मविचार –

आत्मानं सततं जानन्कालं नय महाद्युते ।
प्रारब्धमखिलं भुञ्जन्नोद्वेगं कर्तुमर्हसि ॥
आत्मा नै सब हो भन्ने जानेर गर चिन्तन ।
गर्दै प्रारब्धको भोग छोड उद्वेग तत्क्षण ॥

(८९)

प्रारब्धकर्म –

उत्पन्ने ऽप्यात्मविज्ञाने प्रारब्धं नैव मुञ्चति ।
इति यच्छ्रूयते शास्त्रे तन्निराक्रियतेऽधुना ॥
प्रारब्धकर्म नासिन्न आत्मज्ञान भए पनि ।
भन्ने जो शास्त्र छन् सारा हुन्छन् खण्डित ती पनि ॥

(९०)

तत्त्वज्ञानोदयादूर्ध्वं प्रारब्धं नैव विद्यते ।
देहादीनामसत्त्वात्तु यथा स्वप्नो विबोधतः ॥
ज्ञानले भाग्छ प्रारब्ध जाग्दा स्वप्न उडे सरी ।
हुन्छन् असत्य देहादि प्रारब्ध स्वप्न नै सरी ॥

(९१)

कर्म जन्मान्तरीयं यत्प्रारब्धमिति कीर्तितम् ।
तत्तु जन्मान्तराभावात्पुंसो नैवास्ति कर्हिर्चित् ॥
जन्मान्तरीय जो कर्म त्यो नै प्रारब्ध हो स्वतः ।
तत्त्वज्ञान पछि ज्ञानी भोग्दैन फल वस्तुतः ॥

(९२)

स्वप्नदेहो यथाध्यस्तस्तथैवायं हि देहकः ।
अध्यस्तस्य कुतो जन्म जन्माभावे हि तत्कुतः ॥
स्वप्नदेह सरी जाग्रत् देह अध्यस्त हो भने ।
कसरी त्यसको जन्म हुने र कर्म जन्मने ॥

(९३)

ज्ञानद्वारा प्रपञ्चको निवृत्ति –

उपादानं प्रपञ्चस्य मृद्भाण्डस्येव कथ्यते ।
अज्ञानञ्चैव वेदान्तैस्तस्मिन्नष्टे क्व विश्वता ॥
घडा प्रपञ्च हो कार्य माटो अज्ञान कारण ।
हुँदा कारणको नाश कार्य हुन्छ निवारण ॥

(९४)

यथा रज्जुं परित्यज्य सर्पं गृह्णाति वै भ्रमात् ।
तद्वत्सत्यमविज्ञाय जगत्पश्यति मूढधीः ॥
भ्रमले रज्जु ठानेर सर्प पक्रन्छ मूढले ।
त्यस्तै नै सत्य बिर्सेर जगत् पक्रन्छ अज्ञले ॥

(९५)

रज्जुरूपे परिज्ञाते सर्पखण्डं न तिष्ठति ।
अधिष्ठाने तथा ज्ञाते प्रपञ्चः शून्यतां गतः ॥
रज्जुज्ञान जसै हुन्छ सर्पको भ्रम हट्तछ ।
ब्रह्मज्ञान जसै हुन्छ स्वतः प्रपञ्च हट्तछ ॥
(९६)

अज्ञानीका लागि प्रारब्ध –
देहस्यापि प्रपञ्चत्वात्प्रारब्धावस्थिति कुतः ।
अज्ञानिजनबोधार्थं प्रारब्धं वक्ति वै श्रुतिः ॥
देह प्रपञ्च हो आफैँ कहाँ प्रारब्ध बस्तछ ?
अज्ञानी जनका लागि प्रारब्ध श्रुति भन्दछ ॥
(९७)

ज्ञानीका लागि प्रारब्ध हुँदैन –
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ।
बहुत्वं तन्निषेधार्थं श्रुत्या गीतञ्च यत्स्फुटम् ॥
ब्रह्मको ज्ञानले कर्म भस्म हुन्छन् बिलाउँछन् ।
बहुत्वको निषेधार्थ श्रुतिले गीत गाउँछन् ॥
(९८)

प्रारब्धकर्म मान्नमा दोष –
उच्यतेऽज्ञैर्बलाच्चैतत्तदानर्थद्वयागमः ।
वेदान्तमतहानञ्च यतो ज्ञानमिति श्रुतिः ॥
अज्ञानी नबुझी गर्छ प्रारब्धको समर्थन ।
भने वेदान्तको नाश ज्ञानको हुन्छ खण्डन ॥
(९९)

निदिध्यासन –

त्रिपञ्चाङ्गान्यथो वक्ष्ये पूर्वोक्तस्य हि लब्धये ।
तैश्च सर्वैः सदा कार्यं निदिध्यासनमेव तु ॥
ज्ञानका प्राप्तिका निम्ति निदिध्यासन तत्त्वतः ।
पन्ध्रोटा अङ्गले युक्त हुन्छन् प्रस्तुत वस्तुतः ॥
(१००)

निदिध्यासनको महत्त्व –

नित्याभ्यासादृते प्राप्तिर्न भवेत्सच्चिदात्मनः ।
तस्माद्ब्रह्म निदिध्यासेज्जिज्ञासुः श्रेयसे चिरम् ॥
निदिध्यासन छोडेर ब्रह्मज्ञान असम्भव ।
दीर्घ अभ्यासले मात्रै ब्रह्मज्ञान छ सम्भव ॥
(१०१)

निदिध्यासनका अङ्गहरू –

यमो हि नियमस्त्यागो मौनं देशश्च कालता ।
आसनं मूलबन्धश्च देहसाम्यञ्च दृक्स्थितिः ॥
यम औ नियम त्याग मौन कालादिको क्रम ।
आसनादि सबै गर्न गर्नुपर्दछ नै श्रम ॥
(१०२)

प्राणसंयमनञ्चैव प्रत्याहारश्च धारणा ।
आत्मध्यानं समाधिश्च प्रोक्तान्यङ्गानि वै क्रमात् ॥
प्राणसंयमका साथै प्रत्याहारादि साधिका ।
धारणा आत्मध्यानादि अङ्ग हुन् ती समाधिका ॥
(१०३)

यमको निरूपण –

सर्वं ब्रह्मेति विज्ञानादिन्द्रियग्रामसंयमः ।
यमोऽयमिति सम्प्रोक्तोऽभ्यसनीयो मुहुर्मुहुः ॥
सारा प्रपञ्च हो ब्रह्म भन्दै राखेर संयम ।
लामो अभ्यास गर्नु नै पहिलो अङ्ग हो यम ॥
(१०४)

नियमको निरूपण –

सजातीयप्रवाहश्च विजातीयतिरस्कृतिः ।
नियमो हि परानन्दो नियमात्क्रियते बुधैः ।
माथि उठ्नु सजातीय विजातीय हुनू कम ।
यही नियम हो भन्ने ज्ञानीको मत उत्तम ॥
(१०५)

त्यागको निरूपण –

त्यागः प्रपञ्चरूपस्य चिदात्मत्वावलोकनात् ।
त्यागो हि महतां पूज्यः सद्यो मोक्षमयो यतः ॥
आत्मज्ञान भएमात्र प्रपञ्चरूप भाग्दछ ।
त्याग नै हो ठूलो मोक्ष जो यसैबाट मिल्दछ ॥
(१०६)

मौनको निरूपण –

यस्माद्वाचो निवर्तन्ते अप्राप्य मनसा सह ।
यन्मौनं योगिभिर्गम्यं तद्भवेत्सर्वदा बुधः ॥
वाणी र मन फर्कन्छन् ब्रह्म नै नबुझीकन ।
योगीले गर्दछन् प्राप्त ब्रह्म हो मौनचिन्तन ॥
(१०७)

वाचो यस्मान्निवर्तन्ते तद्वक्तुं केन शक्यते ।
प्रपञ्चो यदि वक्तव्यः सोऽपि शब्दविवर्जितः ॥
वाणीले ब्रह्म भेट्तैन कसले भन्न सक्तछ ?
प्रपञ्च पनि साँच्चै नै शब्दद्वारा अवाच्य छ ॥
(१०८)

इति वा तद्भवेन्मौनं सतां सहजसंज्ञितम् ।
गिरा मौनं तु बालानां प्रयुक्तं ब्रह्मवादिभिः ॥
मौन भन्छन् यसैलाई यही हो साधुलक्षण ।
ब्रह्मवादीहरू भन्छन् बालको मौनलक्षण ॥
(१०९)

देशको निरूपण –

आदावन्ते च मध्ये च जनो यस्मिन्न विद्यते ।
येनेदं सततं व्याप्तं स देशो विजनः स्मृतः ॥
आदि मध्य सँगै अन्त्य सबैमा जनशून्य छ ।
भने निर्जन हो देश त्यही नै उपयुक्त छ ॥
(११०)

कालको लक्षण –

कलनात्सर्वभूतानां ब्रह्मादीनां निमेषतः ।
कालशब्देन निर्दिष्टो ह्यखण्डानन्द अद्वयः ॥
कलना जसले गर्छ ब्रह्मादिको निमेषमा ।
अखण्डानन्द सो ब्रह्म गनिन्छ कालनाममा ॥
(१११)

आसनको निरूपण –
सुखेनैव भवेद्यस्मिन्नजस्रं ब्रह्मचिन्तनम् ।
आसनं तद्विजानीयान्नेतरत्सुखनाशनम् ॥
जुन आसनमा हुन्छ सुखले ब्रह्मचिन्तन ।
अन्यथा आसनै हैन जो गर्छ सुखनाशन ॥
(११२)

सिद्धासनको लक्षण –
सिद्धं यत्सर्वभूतादि विश्वाधिष्ठानमव्ययम् ।
यस्मिन्सिद्धाः समाविष्टास्तद् वै सिद्धासनं विदुः ॥
सिद्ध हुन्छन् जहाँबाट लीन हुन्छन् जहाँ स्वतः ।
हो अव्यय अधिष्ठान त्यो सिद्धासन वस्तुतः ॥
(११३)

मूलबन्धको निरूपण –
यन्मूलं सर्वभूतानां यन्मूलं चित्तबन्धनम् ।
मूलबन्धः सदा सेव्यो योग्योऽसौ राजयोगिनाम् ॥
पञ्चभूत तथा चित्तबन्धको मूल साधन ।
सेव्य हो राजयोगीको त्यही हो मूलबन्धन ॥
(११४)

देहसाम्यको निरूपण –
अङ्गानां समतां विद्यात्समे ब्रह्मणि लीयते ।
नो चेन्नैव समानत्वमृजुत्वं शुष्कवृक्षवत् ॥
सबैमा समता राख्नु ब्रह्ममा लीन नै हुनु ।
हो देहसाम्यता, नत्र सुकेको काठझैँ हुनु ॥
(११५)

दृक्स्थितिको निरूपण –

दृष्टिं ज्ञानमयीं कृत्वा पश्येद् ब्रह्ममयं जगत् ।
सा दृष्टिः परमोदारा न नासाग्रावलोकिनी ॥
गरी ज्ञानमयी दृष्टि हेरे संसार ब्रह्म हो ।
यही परम हो दृष्टि नासाग्र दृष्टि तुच्छ हो ॥
(११६)

दृष्टिदर्शनदृश्यानां विरामो यत्र वा भवेत् ।
दृष्टिस्तत्रैव कर्तव्या न नासाग्रावलोकिनी ॥
दृष्टि दर्शन औ दृश्य जैले विराम बन्दछन् ।
दृष्टि गर्नु त्यसैलाई नासाग्र हैन भन्दछन् ॥
(११७)

प्राणायामको सामान्य लक्षण –

चित्तादिसर्वभावेषु ब्रह्मत्वे सर्वभावनात् ।
निरोधः सर्ववृत्तीनां प्राणायामः स उच्यते ॥
चित्तादि सब वस्तुमा गरेर ब्रह्मभावना ।
सम्पूर्ण वृत्ति रोकेमा हुन्छ प्राणायमीपना ॥
(११८)

रेचक र पूरक प्राणायाम –

निषेधनं प्रपञ्चस्य रेचकाख्यः समीरणः ।
ब्रह्मैवास्मीति या वृत्तिः पूरको वायुरीरितः ॥
प्रपञ्चको निषेधै हो वस्तुतः शुद्ध रेचक ।
अहं ब्रह्मास्मिको वृत्ति हो प्राणायाम पूरक ॥
(११९)

कुम्भक प्राणायम –
ततस्तद्वृत्तिनैश्चल्यं कुम्भकं प्राणसंयमः ।
अयं चापि प्रबुद्धानामज्ञानां प्राणपीडनम् ॥
अहंब्रह्मास्मिमा अड्नु प्राणायाम चिरन्तन ।
यै हो कुम्भक ज्ञानीको, अज्ञको प्राणपीडन ॥
(१२०)

प्रत्याहारको लक्षण –
विषयेष्वात्मतां दृष्ट्वा मनसश्चितिमज्जनम् ।
प्रत्याहारः स विज्ञेयो ऽभ्यसनीयो मुमुक्षुभिः ॥
आत्मा सम्पूर्णमा देखी आत्मामा चित्त लाउनु ।
यो प्रत्याहार हो यस्मै ज्ञानीले जोड लाउनु ॥
(१२१)

धारणाको लक्षण –
यत्र यत्र मनो याति ब्रह्मणस्तत्र दर्शनात् ।
मनसो धारणञ्चैव धारणा सा परा मता ॥
मन जान्छ जतातर्फ त्यता नै ब्रह्मदर्शन ।
गरेर मनमा राख्नु धारणा अति उत्तम ॥
(१२२)

ध्यानको लक्षण –
ब्रह्मैवास्मीति सद्वृत्त्या निरालम्बतया स्थितिः ।
ध्यानशब्देन विख्याता परमानन्ददायिनी ॥
अहं ब्रह्मास्मि सद्वृत्ति लिई आलम्बनै कन ।
रहनू ध्यान यो नै हो दिन्छ आनन्द तत्क्षण ॥
(१२३)

समाधिको लक्षण –
निर्विकारतथा वृत्त्या ब्रह्माकारतथा पुनः ।
वृत्तिविस्मरणं सम्यक् समाधिर्ज्ञानसंज्ञकः ॥
विकारहीन भै चित्त ब्रह्माकार बनीकन ।
प्रपञ्चशून्य ज्ञानीको स्थिति समाधिलक्षण ॥
(१२४)
निदिध्यासनको अवधि –
इमञ्चाकृत्रिमानन्दं तावत्साधु समभ्यसेत् ।
वश्यो यावत्क्षणात्पुंसः प्रयुक्तः सन्भवेत्स्वयम् ॥
ब्रह्मानन्द नहुन्जेल निदिध्यासन साधन ।
ब्रह्मज्ञान जसै हुन्छ यसको हुन्छ बाधन ॥
(१२५)
निदिध्यासनको फल –
ततः साधननिर्मुक्तः सिद्धो भवति योगिराट् ।
यत्स्वरूपं न चैतस्य विषयो मनसो गिराम् ॥
सबै साधन निर्मुक्त मुमुक्षु ब्रह्म बन्दछ ।
ज्ञानी पनि स्वयं आफैँ अवाङ्मनस बन्दछ ॥
(१२६)
समाधिमा विघ्न –
समाधौ क्रियमाणे तु विघ्ना आयान्ति वै बलात् ।
अनुसन्धानराहित्यमालस्यं भोगलालसम् ॥
विघ्न पर्छन् समाधिमा आउँछन् ती दनादन ।
अनुसन्धानराहित्य आलस्य भोगमा मन ॥
(१२७)

लयस्तमश्च विक्षेपो रसास्वादश्च शून्यता ।
एवं यद्‌विघ्नबाहुल्यं त्याज्यं ब्रह्मविदा शनैः ॥
निद्रा अज्ञान विक्षेप रसास्वाद विलासिता ।
विघ्न हुन् ब्रह्मवादीका यिनी हुन् त्याज्य सर्वथा ॥
(१२८)

बन्ध र मोक्षमा वृत्तिको कारणता –
भाववृत्त्या हि भावत्वं शून्यवृत्त्या हि शून्यता ।
ब्रह्मवृत्त्या हि पूर्णत्वं तया पूर्णत्वमभ्यसेत् ॥
भावमा वृत्ति हो भाव शून्यमा शून्य हो सदा ।
ब्रह्म हो पूर्ण त्यस्को नै अभ्यास गर्नु सर्वदा ॥
(१२९)

अब्रह्मवृत्तिको निन्दा –
ये हि वृत्तिं जहत्येनां ब्रह्माख्यां पावनीं पराम् ।
ते तु वृथैव जीवन्ति पशुभिश्च समा नराः ॥
त्यागी पावन ब्रह्माख्य वृत्ति जो नर बाँच्तछन् ।
त्यस्ताको हो वृथा जन्म पशु झैँ व्यर्थ बाँच्तछन् ॥
(१३०)

ब्रह्मवृत्तिको प्रशंसा –
यो हि वृत्तिं विजानन्ति ज्ञात्वापि वर्धयन्ति ये ।
ते वै सत्पुरुषा धन्या वन्द्यास्ते भुवनत्रये ॥
ब्रह्मवृत्ति बुझी जल्ले यसलाई बढाउँछन् ।
ती हुन् पुरुषमा धन्य सबैका पूज्य बन्दछन् ॥
(१३१)

ब्रह्मवृत्ति हुनेको मुक्ति –
येषां वृत्तिः समा वृद्धा परिपक्वा च सा पुनः ।
ते वै सद्ब्रह्मतां प्राप्ता नेतरे शब्दवादिनः ॥
ती वृत्ति जसका बढ्छन् परिपक्व बनीकन ।
ब्रह्म बन्छन् तिनै मात्र बन्दैन शब्दभाजन ॥
(१३२)

केवल शब्दवादीहरूको निन्दा –
कुशला ब्रह्मवार्त्तायां वृत्तिहीनाः सुरागिणः ।
तेऽप्यज्ञानितया नूनं पुनरायान्ति यान्ति च ॥
ब्रह्मज्ञान विना जल्ले ज्ञानीको ढोँग गर्दछ ।
त्यस्ताले जन्मने मर्ने सर्वदा गर्नुपर्दछ ॥
(१३३)

ब्रह्मनिष्ठको वृत्ति –
निमेषार्धं न तिष्ठन्ति वृत्तिं ब्रह्ममयीं विना ।
यथा निष्ठन्ति ब्रह्माद्याः सनकाद्याः शुकादयः ॥
ब्रह्मा सनक यद्वा हुन् शुकादि ब्रह्मचिन्तन ।
सबैले गर्दछन् त्यस्तै ज्ञानीले गर्छ चिन्तन ॥
(१३४)

वेदान्तसिद्धान्तको निरूपण –
कार्ये कारणतायाता कारणे नहि कार्यता ।
कारणत्वं ततो गच्छेत्कार्याभावे विचारतः ॥
कार्यकारणमा हुन्छ कार्यले हीन कारण ।
मोक्षमा कार्य नासिन्छन् रहन्छ मात्र कारण ॥
(१३५)

अथ शुद्धं भवेद् वस्तु यद्वै वाचामगोचरम् ।
द्रष्टव्यं मृद्घटेनैव दृष्टान्तेन पुनः पुनः ॥
हटेपछि सबै कार्य रहन्छ ब्रह्म केवल ।
घट नाश जसै हुन्छ माटो रहन्छ केवल ॥
(१३६)

अनेनैव प्रकारेण वृत्तिर्ब्रह्मात्मिका स्थितिः ।
उदेति शुद्धचित्तानां वृत्तिज्ञानं ततः परम् ॥
पूर्वोक्तरीतिले हुन्छ वृत्ति ब्रह्मात्मिका जुन ।
तत्पश्चात् शुद्ध अन्तस्मा ज्ञान झुल्किन्छ तत्क्षण ॥
(१३७)

कारणं व्यतिरेकेण पुमानादौ विलोकयेत् ।
अन्वयेन पुनस्तद्धि कार्ये नित्यं प्रपश्यति ॥
कार्य कारणमा अड्छ व्यतिरेक र अन्वय ।
अनुमानादिका द्वारा हुन्छ त्यस्को समन्वय ॥
(१३८)

ब्रह्मभावनाद्वारा ब्रह्मत्व –

कार्ये हि कारणं पश्येत्पश्चात्कार्यं विसर्जयेत् ।
कारणत्वं ततो गच्छेदवशिष्टं भवेन्मुनिः ॥
गरी कारणको टुङ्गो कार्य नै त्याग्नु पर्दछ ।
राखी कारणमात्रै नै मुनि त्यो ब्रह्म बन्दछ ॥
(१३९)

भावितं तीव्रवेगेन यद्वस्तु निश्चयात्मना ।
पुमांस्तद्धि भवेच्छीघ्रं ज्ञेयं भ्रमरकीटवत् ॥
निश्चयात्मक धीद्वारा राखेर तीव्रभावना ।
भृङ्गीकीट सरी बन्छ जस्को गर्दछ चिन्तना ॥
(१४०)

प्रपञ्चमा ब्रह्मरूपको भावना –
अदृश्यं भावरूपञ्च सर्वमेव चिदात्मकम् ।
सावधानतया नित्यं स्वात्मानं भावयेद्बुधः ॥
दृश्यादृश्य सबै भित्र सावधान बनीकन ।
ब्रह्म सम्झेर ज्ञानीले गरोस् ब्रह्मात्म चिन्तन ॥
(१४१)

दृश्यं ह्यदृश्यतां नीत्वा ब्रह्माकारेण चिन्तयेत् ।
विद्वान्नित्यसुखे तिष्ठेद्धिया चिद्रसपूर्णया ॥
दृश्यै अदृश्य ठानेर त्यो गरोस् ब्रह्मचिन्तन ।
बसोस् आनन्दमा विद्वान् ब्रह्मबुद्धि लिईकन ॥
(१४२)

राजयोगको उपसंहार –
एभिरङ्गैः समायुक्तो राजयोग उदाहृतः ।
किञ्चित्पक्वकषायाणां हठयोगेन संयुतः ॥
माथिका गुणले युक्त हो राजयोग निश्चय ।
चित्त शुद्ध भएमा त हठयोग छ निर्भय ॥
(१४३)

राजयोगको अधिकारी –

परिपक्वं मनो येषां केवलोऽयञ्च सिद्धिदः ।
गुरुदैवतभक्तानां सर्वेषां सुलभो जवात् ॥
शुद्ध चित्त हुनेलाई यल्ले सिद्धि दिलाउँछ ।
शास्त्रमा गुरुमा भक्ति हुनेले शीघ्र पाउँछ ॥
(१४४)

# लेखकका प्रकाशित ग्रन्थहरू

## आध्यात्मिक

१. ज्ञान र भक्ति – २०६३
२. रासपञ्चाध्यायी – २०६४
३. ब्रह्मसाक्षात्कार – २०६५
४. उपनिषत्सार – २०६७
५. ब्रह्मसूत्रसार – २०६७
६. मणिरत्नमाला अनुवाद – २०६७
७. अध्यास र चतुःसूत्री – २०६८
८. वेदान्तपरिभाषासार – २०६८
९. श्रीकृष्णाय वयन्नुमः – २०६९
१०. परमसत्य – २०६९
११. अध्यास – २०६९
१२. अद्वैतसिद्धिः १ खण्ड – २०६९
१३. अद्वैतसिद्धिः २ खण्ड – २०७०
१४. अन्तिम उपदेश – २०७०
१५. ब्रह्मविद्या – २०७०
१६. अजातवाद – २०७१
१७. पराविद्या – २०७१
१८. औपनिषद पुरुष – २०७२
१८. ब्रह्माऽनुभूति – २०७२

## लौकिक

१. उसैको लागिको समीक्षा – २०२६
२. ऋतुमन्थन, समीक्षा – २०४४
३. सिर्जनाका फूलहरू, कविता – २०५१
४. बहादुर शाह, खण्डकाव्य – २०५२
५. श्रद्धाञ्जलि, शोककाव्य – २०५२
६. गीत तथा भजनहरू – २०५२
७. अमरसिंहको चिट्ठी, काव्य – २०५३
८. क्रान्तिदूत, खण्डकाव्य – २०५३
९. विविधयात्रा, कविता – २०५५
१०. यात्रैयात्रा, कविता – २०५८
११. पत्रैपत्र, कविता – २०५९
१२. पृथ्वीविजय, काव्य – २०६२
१३. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
१४. अनुस्मृति (जीवनयात्रा) – २०६७
१५. वन्दना – २०६८
१६. कविशतक – २०६८
१७. अष्ट्रेलियाको दैनिकी – २०६९
१८. आभास – २०७२

